सुमन पोखरेलको
गाए गीत नगाए कविता शृङ्खलाको पहिलो भाग

# हजार आँखा : यी आँखामा




**प्रकाशक**
वाणी प्रकाशन

| | | |
|---|---|---|
| कृति | : | हजार आँखा : यी आँखामा |
| विधा | : | गाए गीत नगाए कविता |
| रचनाकार | : | सुमन पोखरेल |
| आवरण चित्रकार | : | रमेश श्रेष्ठ |
| सर्वाधिकार © | : | रचनाकारमा सुरक्षित |
| प्रकाशक | : | वाणी प्रकाशन, विराटनगर ००२१-२८१२० |
| प्रथम संस्करण | : | २०५९ |
| मुद्रित प्रति | : | ५०० |
| कम्प्यूटर सेटिङ्ग | : | कृष्ण चौधरी, मीनकुमार नवोदित श्रेष्ठ<br>वाणी प्रकाशन, विराटनगर |
| मूल्य | : | रु. ७५/- |
| ISBN | : | 99933-656-3-7 |

HAZAAR AANKHA : YEE AANKHAAMAA

Lyrical poems by

Suman Pokhrel

# गीतको बोटमा फुलेको फूल

बान्की नमिली गीतमा धून नबज्ने हुनाले अथवा स्थायी र अन्तराको आवश्यकता पनि पूरा गरेपछि मात्र त्यहाँ सङ्गीतको आत्मा हाल्न सकिने भएकैले यस्ता खाले छोटा–छोटा कविताहरूलाई गीत भनिएको हो, जसरी गजललाई केही नियमहरूको आवश्यकता पर्छ, हैन भने ती पनि कविता नै हुन् ।

वास्तवमा सुमनका गीतहरू श‍ृङ्खलाबद्ध एउटै विषयमा लेखिएका, प्रेम र सौन्दर्य जोडिएका घटनामा आधारित काव्य जस्तै छन्, जहाँको कुनै भाग उठाएर संगीतबद्ध गरे पनि हुने, जसरी सागरको पानी जहाँबाट उठाए पनि हुन्छ ।

सुमनको भाव, किनारा भत्काउँदै बगेको बाढी झैँ बगेको छ । जहिले बाँधिएलान् सरगममा सुमन, उच्चकोटीको गीतकारमा उनी पनि उभिएलान् । अन्त्यमा गीतको बोटमा फुलेको फूलको नाम नै सुमन पोखरेल हो ।

**कृष्णभूषण बल**

# गीतको दुनियाँमा स्वागत छ

कवि भाइ सुमन पोखरेलको *हजार आँखा : यी आँखामा* शीर्षकको प्रकाशोन्मुख गीत सङ्ग्रहको पाण्डुलिपि भर्खरै पढी सिध्याएको छु र यस क्षण सोचिरहेछुः आखिर गीत भनेको के हो ? गीतमा प्रायः सरलता खोजिन्छ। तर, जीवन हिजोभन्दा आज झन्झन् जटिल हुँदै गइरहेछ। गीत, के यस्तो स्थितिमा पनि सरलता मात्रै हो ? मात्र प्रश्नहरू उब्जिरहेछन्।

एउटा प्रश्न ! प्रश्न माथिको अर्को प्रश्न, सुमन भाइले प्रस्तुत पाण्डुलिपिको विधा छुट्याउने क्रममा 'गाए गीत नगाए कविता' भन्नु भएजस्तै म आफैं पनि अहिलेसम्म अनुत्तरित नै छु र प्रश्नहरूसँग प्रश्न गरिरहेछु– आखिर गीत के हो ?

अन्दाज गर्छु– गीत जीवन हो। जीवन भनेको अँध्यारो र उज्यालो पनि हो। विश्वास र अविश्वास पनि हो। इच्छा र अनिच्छा पनि हो। आशा र निराशा पनि हो। संघर्ष र प्राप्ति पनि हो। भन्न नसकेको स्थिति पनि जीवन हो। भोग्न नसकेको परिस्थिति पनि जीवन हो। जीवन शायद सबैथोक हो। त्यसैले गीत पनि सबैथोक हो। गीतलाई परिभाषामा बाँध्न नसकेको मेरो अहिलेको मनःस्थिति पनि शायद गीत नै हो।

भो ! परिभाषामा गीतलाई नबाधूँ र चैतको हुरीजस्तै छोडिदिऊँ। फूलका पत्रदलसँग खेल्छ भने पनि खेल्न दिउँ। डढेलोसँग मिलेर बल्छ भने पनि बल्न दिऊँ। नाम कामले पाउने हो। हामी नाम खोज्दै नहिडूँ।

सुमन भाइ, म तपाईंको यो लेखनलाई समालोचनाको करौंतीले चिर्न शायद सक्तिनँ होला। सक्छु नै भने पनि भन्ठानुस्– चिरफार गर्न म पटक्कै रुचाउन्न। मलाई सधैं 'सग्लो' मन पर्छ। म फूलका पत्रदललाई एक–एक गरी केलाएर– फूलको सुन्दरतालाई भत्काउन चाहन्न। भात खान बसेको बेला गम–गम भात खानमै मलाई मजा लाग्छ। सिता गन्न थाल्ने हो भनें शायद भात खाईंदैन।

मनपर्नु पनि यस्तै कुरा हो। मलाई मन नपरेको कुरा अर्कालाई मनपर्छ ! मलाई के हक छ अर्काको रुचिमाथि हस्तक्षेप गर्ने ?

जसरी आए पनि तपाईं मनबाट गीतको दुनियाँमा आउनु भएको छ। म, अलि अगाडिदेखि यो दुनियाँ भोगिरहेछु। तपाईंको आगमन त्यसैले पनि मलाई प्यारो लागिरहेछ, न्यानो लागिरहेछ। म तपाईंलाई गीतको यो दुनियाँमा स्वागत गर्छु। तपाईंको यो आगमनलाई मैले आफ्नै अर्थमा ग्रहण गरेको छु। तपाईं आउनु भएकोले– आफू आएको अवस्थालाई सार्थक ठानिरहेको छु।

सल्लाह मात्रै हो मेरो। तपाईं आफैंले पनि लेख्नु भएको छ एक ठाउँमा–

छोरो तँ सबैजस्तो हुनू म जस्तो नहुनू  
संसारलाई फाँडेर हिँड्नु बसेर नरुनू

सुमन भाइ ! गीत तपाईंको छोरो हो। तपाईं, तपाईंले चाहेको छोरो जस्तो हुनुस् ! मेरो शुभ–कामना सधैं तपाईंसँग छ। लेख्नु... लेख्दै रहनु– लेख्न कहिल्यै नछोड्नु ! ल !

**दिनेश अधिकारी**

# भावनाका लहरा र काँडाबीच सुमन...

मन जितेपछि जित्नुपर्ने केही बाँकी रहन्न रहेछ। त्यसैले परास्त छु सुमनका आग्रहसँग र तर्कन खोज्दा–खोज्दै पनि बाध्य छु– हजार आँखाबीचको साहित्यिक कठघरामा उभिन ।

ऋट्ट हेर्दा, सुमनसँग मेरो पारिवारिक सम्बन्ध देखिन्छ, गहिरिएर हेर्दा– छैन पनि । तर उनीसँग मेरो पारिवारिक र बन्धुत्वको सम्बन्धभन्दा साहित्यिक सम्बन्ध प्रगाढ छ । कारण, साहित्यिक माध्यमबाट नै मैले चिनेको हुँ सुमनलाई ।

सुमनको पहिलो कृति "शून्य मुटुको धड्कनभित्र" देखि नै उनको साहित्यिक सिर्जनाप्रति निकट छु । "आफूले सिर्जना गरेका सम्पूर्ण रचनाहरू नछानी सङ्ग्रहमा राख्दा स्तरीयता र विविधताको अभाव हुन्छ कि ? " निरन्तर आफ्नो विचार राख्दै आएको पनि छु सुमनसँग। मेरो आग्रहप्रति सुमनका आफ्नै तर्क छन् "दाइ ! यसपछिका मेरा धेरै गीतहरू प्रकाशनका लागि तयार छन्। अघिल्ला चरणका सम्पूर्ण रचनाहरू म यसमा राख्न चाहन्छु। किन–किन मलाई आफ्ना सबै रचना उस्तै–उस्तै लाग्छन्, गीत छानेर राख्ने यति ठूलो सकस र उठाउन सक्दिनँ, जे जस्तो छ, त्यस्तै रहोस्।" पुनः म प्रतिवाद गर्दिनँ। हो पनि, सर्जक सधैं स्वतन्त्र हुन्छ, उसको स्वतन्त्रतामा अंकुश लाउनु निरङ्कुशता हो। पाठकहरू समीप आफ्ना सिर्जना पस्कने काम लेखकको हो भने त्यसलाई ग्रहण गर्ने–नगर्ने काम पाठकको ।

शब्दहरूसँग खेल्नुको आनन्द एउटा बेग्लै आनन्द हो। शब्दहरूसँग खेल्न रुचाउँछन् सुमन। प्रेम जीवनको सार हो। जसको निकटता मन र मुटुसँग हुन्छ, जसबाट टाढिन सक्दैन सम्वेदनशील मान्छे। त्यसैले यस सङ्ग्रहभित्र समाविष्ट उनका अधिकांश गीतमा सल्लाका सुसाइ झैं प्रेमका सुरिला सुसेलीहरू छन्। तमोरका नागबेली दृश्य–परिदृश्य झैं सौन्दर्यका विविध बिम्ब प्रतिबिम्ब छन्। घाम छ, जून छ, जीवनप्रतिका दर्शन छन्। लाग्छ– फूल झैं कोमल, काँडा झैं तीक्ष्ण अभिव्यक्ति नै सुमनका गीत हुन्।

रोजाइ आफ्नो हो। सङ्ग्रहभित्र समाविष्ट गीतहरूमध्ये कसैलाई प्रेमको मृदु अनुभूति मनपर्ला। कसैलाई मिनका सुखद क्षण मन पर्लान्, कसैलाई वियोगका पीडा। कसैलाई जून मनपर्ला, कसैलाई घाम। जसरी सिर्जनामा लेखक स्वतन्त्र हुन्छ, त्यसरी नै रोजाइमा पाठक। पाठकसमीप आफ्नो सृष्टि पस्कने काम सुमनको हो। उनले नेपाली गीति पाठकसमीप आफ्ना सृष्टि पस्केका छन्। उनी के कति पानीमा छन् ? जसलाई नाप्ने काम पाठकको हो... समयले मूल्याङ्कन गर्ला नै – सुमनका अभिव्यक्तिलाई ! सफलताको अपेक्षसहित– अहिलेलाई शुभकामना !

**विवश पोखरेल**

# प्रकाशकीय

## परिभाषाविहीन परिभाषा

नेपाली साहित्यको यौटा सबल र सम्बद्ध विधा गीत पनि हो। यस विश्वको सर्वप्राचीन र सर्वाधिक लोकप्रिय विधाकारूपमा 'गीत' प्रतिष्ठित र जनप्रिय रहिआएको छ। वैदिक कालका ऋचा र मन्त्रका सस्वरात्मक पाठहरू गीतका प्रारम्भिक जग थिए भने विशेषतः समवेदलाई गीति–काव्यका रूपमा नै लिइएको छ। गीत र संगीतको मूल स्रोतकारूपमा सामवेदलाई लिइएको छ तापनि यो ब्रह्माण्ड नै गीत–संगीतबाट अनुप्राणित छ। 'गीत' शब्द 'गै' धातुमा 'क्त' प्रत्यय लागी बनेको हो, जसले 'गाउन मिल्ने' तथा 'गाइएको' भन्ने संकेत गर्दछ। अंग्रेजीमा गीतलाई Iथचष्अ वा क्यलन भनेको पाइन्छ। 'लायर' नामक एक प्रकारको वाद्ययन्त्रको नामबाट Iथचष्अ भएको हो।

गीतले काब्य अन्तर्गतको यौटा महत्वपूर्ण उपविधाकारूपमा आफ्नो स्थान ग्रहण गरिसकेको छ। गीत आत्माको स्वतन्त्र, स्वच्छन्द र लोकप्रिय अभिव्यक्ति हो र यसलाई विभन्न वि र् ानहरूले विभिन्न दृष्टिले परिभाषित गर्न खोजेका छन्। ग्याले एण्ड कर्टजले आफ्नो सुप्रसिसद्ध पुस्तक ु :भतजयमक बलम : बतभचष्बकिया Iष्तभचबचथ ऋचष्तष्अष्कु मा गीतको यसरी परिभाषा दिएका छन्– 'गीतमा सामाजिकताभन्दा वैयक्तिकताकै प्राधान्य रहन्छ। हुन पनि आधुनिक गीतको जन्म साहित्यमा सामाजिकताको ह्रास भई आत्मपरकताको विकास हुन थालेपछि मात्र भएको हो र यो काव्यको विकसित परम्पराको फलस्वरूप नै साहित्य क्षेत्रमा आएको हो।'

भारतीय गोपालदास निरजले– 'गद्यका क्षेत्रमा लेखकको व्यक्तित्व पोखरीमा फुलेको कमलजस्तै हुन्छ, कवितामा कविको व्यक्तित्व डुङ्गा जस्तै भावनाको नदीमा आधा डुबेको र आधा बाहिर हुन्छ भने गीतमा गीतकारको व्यक्तित्व पानीमा घोलिएको चिनीजस्तो हुन्छ' भनेर गीतको परिभाषा दिएका छन् ।

गीतको सार्थकता संगीत र स्वर हुन् । साङ्गीतिकताको अभावमा गीतको महत्ता निश्चय नै कम हुन्छ । यौटा पूर्ण र सफल गीत भन्नुको अर्थ गीत–रचना, संगीत र स्वरको त्रिवेणी हो । यसरी गीतलाई भावुक अभिव्यक्ति भन्नुपर्छ, जसमा यौटै भावना, विचार र मनोदशाको चित्रण हुनछ । गीत अनुभूतिको झोंक्का हो, भावनाको मनोहर गुञ्जन हो । वास्तवमा गीत यौटा उन्मुक्त आकाशजस्तो हो, जसको परिभाषा गर्नु निश्चय पनि कठिन कार्य हो । अनि सबै कविताहरू गीत हुन्, सबै गीतहरू कविता हुन् सक्छन् । यसैले गीतको परिभाषा र व्याख्या मान्छेको 'मन' हो, जो वैयक्तिक, कल्पनाशील, असामान्य र प्रायः भावुक हुन्छ ।

## नेपाली गीतको रूपरेखा

नेपाली गीतको प्राचीनता लोकगीत हो । नेपाल जन्मनु र सृष्टिको प्रारभ्देखि लोकगीतको प्रारम्भ भएको हो । हाम्रा प्राचीन देवगाथा र वीरगाथा नेपाली गीतका पूर्वाधार हुन् प्रत्येक नेपालीको आवाजकासाथ, बाजाकासाथ लोकगीत स्वस्फूर्त आएका छन् र यो परम्परा समाप्त भएको छैन ।

नेपाली लोकगीतको आफ्नै इतिहास, सम्बृद्धि र उल्लेख्य परम्परा भए पनि गीत –लेख्यको प्रारम्भ मोतीराम भट्टबाट भएको हो । मोतीरामका गीत–गजलबाट हाम्रो गीति इतिहास प्रारम्भ हुन्छ । उनको संगीत चन्द्रोदय नेपाली गीतको पहिलो पुस्तकको रूपमा लिइन्छ । मोतीराम भट्टको मोती मण्डली गीत र गजलकारहरूको उलेखनीय समूह थियो । जसमा शम्भुप्रसाद ढुङ्गेल, लक्ष्मीदत्त पन्त, गोपीनाथ लोहनी, आजद हुसेन आदि प्रमुखरूपमा थिए । यस क्रममा शम्भुप्रसाद ढुङ्गेलको शम्भु भजनमालाको पनि आफ्नै विशिष्ट स्थान रहेको छ । गीतको ऐतिहासिक विकासको क्रममा लेखनाथ पौड्याल बालकृष्ण सम, भीमनिधि तिवारी,

उपेन्द्रबहादुर जिगर, प्रभुनाथ अधिकारी, बहादुरसिंह बराल आदि प्रमुख गीतकारका रूपमा प्रतिष्ठापित भएका छन्।

नेपाली गीतको इतिहासमा लक्ष्मीप्रसाद देवकोटाको मुनामदनको विशिष्ट एतिहासिक महत्व रहेको छ। उनका गाइने गीत र लक्ष्मी गीत सङ्ग्रह पनि उल्लेखनीय गीति पुस्तकहरू हुन्। नेपाली गीति क्षेत्रलाई अरू प्रभावकारी र बृहत् आलोक प्रदान गरे कविवर माधव घिमिरेले। उनका गौरी, किन्नर किन्नरी जस्ता ऐतिहासिक गीति कविता र अन्य थुप्रै पुस्तकहरूले नेपाली गीतको आयामलाई बृहत् बनाएका छन्।

२००७ सालपछि रेडियो नेपालको स्थापनाले नेपाली गीति क्षेत्रमा क्रान्तिकारी परिवर्तन ल्यायो। नेपाली गिर्ी त परम्परालाई अगाडि बढाउनुकासाथै यसमा आधुनिकताको प्रवेश गराउनमा रेडियो नेपालको योगदान उल्लेखनीय रहेको छ। नेपाली गीति परम्परामा म.वी.वि. शाह, धर्मराज थापा, किरण खरेल, रत्न शमशेर थापा, राममान तृषित, माधवप्रसाद खनाल 'भावुक', यादव खरेल आदिको उपसिथतिले नेपाली गीतले आधुनिक मोड र धारा लियो। नेपाली गीतको परम्परागत परम्परालाई समाप्त गरी गीतको विषयवस्तु, भाव, धारा, शैली आदिमा विविधता आयो।

२०३० पछिका दशकहरूमा नेपाली गीतले आफ्नो क्षेत्रलाई अरू फराकिलो बनायो। नेपाली साहित्यमा गीतकारहरूको ठूलै टोली वा समूह आयो। आफ्नो स्पष्ट पहिचान बनाउनेहरूमा गणेश 'रसिक', कृष्णप्रसाद पराजुली, हरिभक्त कटुवाल, ईश्वर बल्लभ, दैवज्ञराज न्यौपाने, रवीन्द्र शाह, चेतन कार्की, गोपाल योञ्जन, मेघराज मञ्जुल, रामेश, रायन, नीर शाह, विश्वबल्लभ, छिन्नलता, हिरण्य भोजपुरे, चाँदनी शाह आदि थुप्रै नामहरू लिन सकिन्छ।

२०४७ को प्रजातन्त्र पुनर्स्थापनापछि गीति क्षेत्र रून् सम्बृद्ध र सशक्त बनेको छ। आफ्नो विशिष्ट योगदानबाट गीतलाई लोकप्रिय सम्वादका रूपमा स्थापना गर्न समर्थ हुनेहरूमा कालीप्रसाद रिजाल, क्षेत्रप्रताप अधिकारी, कृष्णहरि बराल, भैरवनाथ रिमाल 'कदम' दिनेश अधिकारी छन्। यस फाँटमा नयाँ सशक्त र सबल ु : नभलभचबतष्यल आएको छ। तिनको नामावली लेरून पर्दा धनेन्द्र विमल, नरेन्द्रराज

प्रसाईं, श्रवण मुकारुङ्ग उज्वल जि.सी., रमण घिमिरे, भूपाल राई, वीरेन्द्र राई आदि आदि छन् ।

## सुमन पोखरेलको गीति साधना

यस सन्दर्भमा कवि एवम् गीतकार सुमन पोखरेलको चौतारी वा टुङ्गो कुन हो ? आजका गीतकार सुमनलाई नेपाली पाठक र स्रोताहरूले के कस्तो सुमन (फूल)ले स्वागत गर्ने हो ? विचारणीय प्रश्न रहेको छ । सुमनको यो दोस्रो सङ्ग्रह पनि वाणी प्रकाशनले प्रकाशित गरेको छ, यसभन्दा अगाडि उनको कविता सङ्ग्रह 'शून्य मुटुको धड्कनभित्र', २०५६ मा प्रकाशित भइसकेको हो । सुमन पोखरेलको कवित्व–प्रतिभा यस संग्रहमा गीति प्रतिभा भएर आएको छ । सुमनका कविताहरू ओखर जस्ता पनि छन् । तर यसभित्रका गीतहरू भने ललिपप लाग्छन् । यी गीतहरूमा कोमल र सरल अनुभूतिहरूले कल्पनाको आकाशमा राम्ररी उडान भर्न पाएका छन् । एक वाक्यमा भन्नुपर्दा सुमनका यी गीतहरू 'प्रेमिकालाई लेखिएका संवेदनपूर्ण भावुक प्रेमपत्रहरू हुन् ।' प्रेमका धेरै रूप, परिभाषा र आकारहरू हुन्छन् । मानवीय जीवनको प्रमुख तत्व प्रेम हो र मानवीय सभ्यता भन्नु नै प्रेमको सभ्यता हो । प्रेमका रङ्गीन भावनामय फूलहरूलाई सुमनले शब्दका माध्यमले राम्ररी सजाएका छन् । गीतहरूमा प्राप्ति छ, अप्राप्ति छ, भाव छ, भावना छ, संवेदना छ, आँसु छ, मुस्कान छ । प्रेममय कुराकानीका केही राम्रा उदाहरण यी गीतका टुक्राहरू छन् ।

मेरा आफन्तलाई पराई बनायौ शायद
नजीक आउन त्यसैले तिमी डरायौ शायद

(गीत संख्या– २)

निस्सससिई अझै खै के मा मर्न खोज्छु
पटक पटक मरेर फेरि बाँच्न खोज्छु

(गीत संख्या– ३)

गाजलु ती आँखाबाट पसुँ–पसुँ जस्तो लाग्छ
यो मुटुलाई त्यो मुटुमा टाँसु टाँसु जस्तो लाग्छ

(गीत संख्या– ५)

म ओठ दिन्छु तिमी निधार देऊ
म छाती दिन्छु तिमी शिर देऊ
(गीत संख्या– ५२)

सुमनको वैयक्तिक प्रेम सार्वजनीन र सार्वकालिक पनि हुन सक्छ। भावुकताको अन्तिम परिणति यी हरफहरू छन्–

अलिकति म बाँचुला अलिकति तिमी बाँचिदेदेऊ
आऊ हामी जिन्दगीलाई एक अर्काकोमा गाँसिदिऊँ
(गीत संख्या– ३३)

अनि प्रेमिकाको सौन्दर्यवर्णन–

रात जस्तो केश त्यो, जून जस्तो मुहार
कति सुन्दर कति राम्रो मुस्कानको जुहार
(गीत संख्या– २५)

फेरि निराशा पनि साथै छ–

केवल दुई हातमाथि आराम गरिरहेछु
चितामाथि हेर आज म हाँसिरहेछु।
(गीत संख्या– ५०)

रहरहरू मरिगए मेरो आगत पानी भो'
सबै नाता बिराना मेरो रगत पानी भो'
(गीत संख्या– ४९)

प्रेमिकाको वैध्यव्यको भय पनि छ–

साथ दिउँला लामो भन्थें
ज्यादै क्षणिक रहेछ जीवन,
एकछिनको सिन्दुर भएर पुछिएँ
केही लुङ्ग पोते भएर चुँडिएँ,
(गीत संख्या– १३)

सुमन पोखरेलका यी गीतहरू साहित्यिक गीत हुन् र यिनका साहित्यिक मूल्य उल्लेखनीय छन् । यिनलाई पाठकले पढ्दा जुन रसास्वादन गर्छन्, राम्रो संगीत र स्वर भएमा निश्चय पनि यी कर्णप्रिय र लोकप्रिय हुनेछन् भन्ने कुरामा म विश्वस्त छु । यी गीतहरू सुमनका मात्र गीत होइनन्, यी स्वरहरू उनका मात्र होइनन्, यी प्रेमका व्यक्त–अव्यक्त पीडाहरूमा उनी उक्ला छैनन्– मलाई लाग्छ यी युवा पुस्ताका सामूहिक तथा समसामायिक प्रेममय अन्तरआवाजहरू हुन्– जसको सम्यक प्रतिनिधित्व 'हजार आँखा : यी आँखामा' भएका छन् । वर्तमान पिँढी र अवस्थाको यथार्थ प्रतिनिधित्व सुमनका यी गीतहरूले अवश्य पनि गरेका छन् भन्ने मलाई लाग्छ । उनका उर्दूमा लेखिएका गजलहरूको पनि अर्को संग्रह हुनसक्छ ।

कवि शैलेन्द्र साकारले लेखेका छन्– 'कवि सुमन पोखरेलमा कथ्य र शिल्पको सुन्दर संयोजनको अपेक्षा गर्दै आगामी पुस्ताले उनीबाट नयाँ कविताको बान्की प्राप्त गर्नेछ ।" "कवि सुमन पोखरेलले जीवनका विविध भोगाइ, सौन्दर्य चेतना एवं अभिव्यञ्जनका तरलताहरूलाई छोइने गरी काव्य– रचना गरेका छन्" –यस्तो टिप्पणी छ साहित्यकार ध्रुव मधिकर्मीको ।

साहित्यकार शिव रेग्मीले– "सुमनका यी सम्प्रेषणीय भावनाहरूसँग म पूर्ण सहमत छु– माया र प्रणयका स्वरहरूमा । आफ्ना मनका भावनाहरू सुरुचिपूर्ण ढङ्ग व्यक्त गरेका कविका यी हरफहरूले कसको मन पो नछोलान् र ! " भनी व्यक्त गरेका छन् । अनि अन्त्यमा मलाई लाग्छ– सुमनका यी एकसट्ठी गीतहरू नेपाली गीति फाँटका एकसट्ठी सुन्दर गेय फूलहरू हुन्– जसले हाम्रो इतिहासमा नयाँ मोडहरूको उदघाटन गर्ने छन् ।

**परशु प्रधान**
अध्यक्ष
वाणी प्रकाशन, विराटनगर विषय–सूची

# विषय–सूची

# 1

तिमी र म अनि यो मधुमास
आऊ आज भुलौँ संसारलाई

बढ्दै गएका मुटुका धड्कन
चढ्दै गएका आँखाका नसा
ती रहर, यी इच्छा, अनि कामनालाई
भन कसरी बाँधूँ यो सागरलाई
आऊ आज भुलौँ संसारलाई
तिमी र म अनि, यो जुनेली रात

खुल्दै गरेका लाजका पर्दा
फुक्दै गरेका सङ्कोचका बाधा
त्यो वेग यो आँधी, अनि बतासलाई
अब कसरी रोकूँ तूफानलाई
आऊ आज भुलौँ संसारलाई
तिमी र म अनि, यो मधुमास

## |2

मेरा भावनालाई तिर्सना ठान्यौ शायद
नजीक आउन त्यसैले तिमी डरायौ शायद

दुई पल साथरहे एक जीवन पाउनेथे
धेरै दिनका मौन यी अधर मुस्काउनेथे
यी रात रुँदै काट्ने तिमीले बनायौ शायद
नजीक आउन त्यसैले तिमी डरायौ शायद

आफ्नो भन्छ्यौ जसलाई त्यो आँखा मेरै थियो
मुटुमात्र हैन सब भाव–भाका मेरै थियो
मेरा आफन्तलाई पराई बनायौ शायद
नजीक आउन त्यसैले तिमी डरायौ शायद

## ३

पटक पटक मरेर फेरि बाँच्न खोज्छु
यौवनको प्यास नभनूँ त के भनूँ

एक मृत्यु त्यो नजरमा मरेँ
अर्कोपल्ट फेरि अधरमा मरेँ
कपोलमा मरेँ केशपासमा मरेँ
रहर उत्तिकै छ अझै मर्न खोज्छु
पटक पटक मरेर फेरि बाँच्न खोज्छु

रहरैले पनि तिर्सनामा मरेँ
एकछिन मायाको चाहनामा मरेँ
सामीप्यमा मरेँ आलिङ्गनमा मरेँ
निसास्सिई अझै खै केमा मर्न खोज्छु
पटक पटक मरेर फेरि बाँच्न खोज्छु

## 4

खै के सुनाउनु उनलाई, मुटु मेरो पोलेको
देख्दछु उनको मुहारमा मेरै व्यथा दुखेको

चोट लुकाए ॐ मनमा
देख्दिनँ जाँगर तनमा
मुस्कान हराएको देख्छु
फिकाफिका अधरमा मेरै कथा लेखेको
देख्दछु उनको मुहारमा मेरै व्यथा दुखेको

शब्द हराए ॐ भाकामा
देख्दिनँ रहर आँखामा
आँसु रसाएको देख्छु
उदासउदास नजरले मेरै जेथा बोकेको
देख्दछु उनको मुहारमा मेरै व्यथा दुखेको

## ५

तिम्रो मनको मञ्जेरीमा बसूँबसूँ जस्तो लाग्छ
हामी दुईको सम्बन्धलाई कसूँकसूँ जस्तो लाग्छ

जिन्दगीको मध्यान्हमा जतातत‍ै पोलेजस्तो
कसले कसले वर्षौंदेखि सँधैभरि खेदेजस्तो
रेशमी त्यो केशमा एकछिन लुकूँलुकूँ जस्तो लाग्छ
नचुँडिने एउटा नाता गाँसूँगाँसूँ जस्तो लाग्छ

खोजेको घर मैले त्यो मनभित्र देखेजस्तो
भित्र पस्ने बाटो तर मौनताले छेकेजस्तो
गाजलु ती आँखाबाट पसूँपसूँ जस्तो लाग्छ
यो मुटुलाई त्यो मुटुमा टासूँटासूँ जस्तो लाग्छ

## 6

हरेक साँझ झिकेर मुटु बोक्दछु हातमा
के गर्नु नत्र पागलझैँ हुन्छु हर मध्यरातमा

स्वप्नझैँ जब सम्झना आउँछन् अतीतका ती दिन
डडेलोलेझैं निरीह छाती पोल्दछ छिन छिन
हराइदिन्छु त्यसैले हरदात रक्सीको मातमा
के गर्नु नत्र पागलझैँ हुन्छु हर मध्यरातमा

आँखामा आँसु, ओठमा तृष्णा, डाह छ मुटुमा
आँसुले जलन बढाइदिन्छ पोखिई चोटमा
रमाइदिन्छु, भैदिन्छु खुसी, जीवनको घातमा
के गर्नु नत्र पागलझैँ हुन्छु हर मध्यरातमा

7

छ्यान्द्रो मेरो मुटुमा माया राखिनौ ठीक गऱ्यौ
भन्छन् डोकोमा थापेर पानी कहिल्यै भरिन्न
पार गर्ने गराउने जहाज नै पाइन्छ भने
कागजको नाऊमा बसेर सागर कहिल्यै तरिन्न

छाती चिरेर देखाऊँ कसरी, भित्र हाल के होला
हजार टुक्रा भएर पनि मुटु कहिल्यै छरिन्न
हेर्ने भए आऊ फेरि यस्तो मौका नहोला
एकपल्टको जीवनमा दोहोर्‍याएर मरिन्न

जीवनको चिसो अनुभव, यी आँसु मैले के गर्नु
माघको महिना लेकमा दिनहुँ नुहाउने गरिन्न
अब मेरो मृत्युमा अपशोच तिमी नगर्नू
आँखाको कसेर निस्किँदा आँसु बहाउने गरिन्न

# ४

च्यातिएको मनमा के घर बन्ला, नबन्दै भत्केला
भाग्य पनि फुटेकै होला, के हेर्नु हत्केला

दुखेका रहर चुँडिएका इच्छा किचिएको हृदय
हजारौँ हजार सपना बोकी थिचिएको हृदय
फाटेको मुटु के सिउनु र, सिउनी नै खुस्केला
भाग्य पनि फुटेकै होला के हेर्नु हत्केला

फूलैले घोच्छ शीतैले पोल्छ चर्केको मनमा
चाहनाको चितामा ठोक्किई मर्केको मनमा
प्रीतको दीप के बल्थ्यो अब धुँवा चैँ निस्केला
भाग्य पनि फुटेकै होला के हेर्नु हत्केला

## 9

चस्किदियो छाती फेरि सम्झनामा तेरो
किन अझै आफ्नी हुन्छेस् कल्पनामा मेरो

मनभरि तेरो माया छातीभरि घात
दिन दिन्छु अरूलाई आफ्नो केवल रात
अन्धकारमा किन घोच्छेस् यादहरूले यस्तो
फूल जति अरूको र काँढा मेरो जस्तो

रम्न खोज्छु केशमा, त्यो रात बनिदिन्छ
आँखाभित्र डुब्न खोज्दा आँसु झरिदिन्छ
अधरका मिठासहरू आज तिर्सना जस्तो
सँगै बिताएका रातहरू अब सपना जस्तो

## 10

झरेको फूल फेरि बहार बटुल्न खोज्छ
टुक्रिसकेको मुटु रहर सँगाल्न खोज्छ

एकपल्ट झरेर के भो वसन्त फेरि आउँछ
वैँशको रङ्गमा रम्न प्रकृति पनि धाउँछ
निराशा उठेर आज आश अँगाल्न खोज्छ
टुक्रिसकेको मुटु रहर सँगाल्न खोज्छ

बाँच्न चाहनेले केही चोट खप्नैपर्छ
घाउ निको हुन एकछिन त पर्खनैपर्छ
खै केले मनलाई, यसरी सम्हाल्न खोज्छ
टुक्रिसकेको मुटु रहर सँगाल्न खोज्छ

11

दुई सागर पानी यी आँखाभित्र
छातीमा कुइरो छ
शीतल छ माया भन्दछन् सबै
त्यही घाउ गहिरो छ

प्रीतिको चोट सँधै नै दुख्छ
हुँदैन पुरानो
ठान्दथेँ म जसलाई आफ्नो
त्यही भयो बिरानो
हृदयभित्र कसले पो देख्छ
दुःखको ओइरो छ
त्यही घाउ गहिरो छ

जीवन भयो जङ्गलको यात्रा
एक्लोपन साथ छ
न जून देख्छु न तारा आफ्नो
अँधेरी रात छ
पछाडि फर्के भास छ अब
अगाडि पहिरो छ
त्यही घाउ गहिरो छ

## 12

एउटा जीवन मैले डरले किचेर बाँचें
रहर त थिएन करले थिचेर बाँचे

फूल छुन खोज्दा काँडा औंला घोच्ने
जे सुकै खोजे पनि चोटै हात लाग्ने
कहिलेकाँही भ्रममा खुसी छोएर बाँचें
धेरैजसो तर आँसु रोएर बाँचें

भावनाको चासो छैन, बलको मान हुने
मान्छे भै सोच्न थाले कुकुर झैँ हाल हुने
आकाङ्क्षालाई कुल्ची पशु भएर बाँचें
कहिले कहिले केवल मासु भएर बाँचें

पहिले त तिम्रो जीवनको शृङ्गार भएर सजिएँ
आज हेर के भयो सपना टुटेझैँ टाढिएँ

साथ दिउँला लामो भन्थेँ
ज्यादै क्षणिक रहेछ जीवन
एकछिनको सिन्दुर भएर पुछिएँ
केही लुङ पोते भएर चुँडिएँ

मायामा भावना साटुँला भन्थेँ
अति नै कठोर रहेछ मरन
केहीबेरको टीका भएर भाँचिएँ
अलिकति चुरा भएर टुक्रिएँ

## 14

कामनाहरूलाई रोकिराख्न सक्छु
बेहोसीमा पनि होस राख्न सक्छु

सायद ममा आज कुनै कसर छैन
मलाई लाजहरूको केही असर छैन
एकछिनको लागि लाटो हुनसक्छु
बैँसका रहरलाई बिर्सिदिन सक्छु

नडराए हुन्छ केही लुटिलिने छैन
तिम्रो त्यो बैँसलाई घात दिने छैन
लरखराए बरु सहारा दिन सक्छु
रक्सिएरै पनि म नमातिन सक्छु

15

को दुरुछ अब मलाई चोट बाँचिदिन्छु
छुँदैन अपमानले म खोट बाँचिदिन्छु

सपनाको म्याद के नै छ र
बीच मै पनि ब्यूँझदिन्छु
चिथोरी कल्पनामा झस्क्याई टाँसिदिन्छु
काँडाले के घोचोस् चस्क्याई हाँसिदिन्छु

सजायको हद के नै होला
आरोप सबै सहिदिन्छु
फेरेर सबै परिभाषा आयु ब्यूँझाइदिन्छु
छट्पटिन्छु जीवनले म मृत्यु निदाइदिन्छु

## 16

धेरै धेरै रहरहरू तर प्राप्ति गाह्रो भो'
मेरै इच्छा आज किन विवशताको तारो भो'

छातीमा विश्वास जलेपछि
एक्लोपन शायद प्यारो भो'
सपना पानीझैँ बहिपछि
आँसु झर्न के गाह्रो भो'

खुसी खरानी भै जलिसक्दा
शायद बाँकी अँध्यारो भो
माया चोट भई बसेपछि
मुटु दुख्न के गाह्रो भो'

खुसी खरानी सपना पानी
जिन्दगी नै अफठ्यारो भो'
पीरले बोली रोकेपछि
ओठ टोक्न के गाह्रो भो'

## 17

आज यो मैले तिमीलाई नै सुम्पिदिएँ
जे गर यसलाई तिम्रै जिम्मा लगाएँ

हिजो अस्ति त यो अरूको ऋणी थियो
अलिअलि आश सबलाई बेच्या थियो
आज हकदाबी गर्न अरु कोही आउने छैन
आश भन तिमी या लाश भनिदेऊ
चाहे गाड यसलाई चाहे जलाइदेऊ
जे गर यसलाई तिम्रै जिम्मा लगाएँ
आज यो मैले तिमीलाई नै सुम्पिदिएँ

जीवनको ब्यस्ततामा सँधै नै म हराएँ
यही हो त्यो कमाइ जो मैले आज पाएँ
अब फिर्ता माग्न कोही पनि आउने छैन
यश भन तिमी या लाश भनिदेऊ
चाहे सञ्चय गर चाहे सडाइदेऊ
जे गर यसलाई तिम्रै जिम्मा लगाएँ
आज यो मैले तिमीलाई नै सुम्पिदिएँ

## 18

यहाँ प्रभात पनि रात हुन थाल्या छ
अब माया पनि आघात हुन थाल्या छ

कसको गरौँ विश्वास यहाँ धोका धेरै भयो
एउटा मुटु थियो भत्केर खेरै गयो
यहाँ चाहनाको पनि जात हुन थाल्या छ
अब माया पनि आघात हुन थाल्या छ

कसरी रोकौँ निश्वास, अत्यास धेरै पऱ्यो
एउटा तृष्णा मनको मनभित्रै मऱ्यो
यहाँ तिर्सनामा पनि मात हुन थाल्या छ
अब माया पनि आघात हुन थाल्या छ

19

तिम्रा रहरहरूमा भिजाऊ मलाई
केही आश देखाई रिझाऊ मलाई

थुप्रै इच्छा बोकी लजाएकी छु
केही बोल्न खोजी शर्माएकी छु
सँधै तिर्सनामा कति देखूँ म
लौ सामु आऊ सबै धक फुकाई
यौवनका चाहना सुनाऊ मलाई

वैंसका सबै उमङ्ग नै जलाई
निश्वासलाई यसरी चलाई
सँधै कल्पनामा कति लेखूँ म
लौ आज रोकौं उच्छ्वासलाई
केही त अनुभव दिलाऊ मलाई

20

जीवनको बाटोभरि व्यथैव्यथा देखेँ
तिनै व्यथा सङ्गालेर एउटा गीत लेखेँ

पोहोर साल गह भिजाई एउटा झरी पऱ्यो
आँखाभरि सङ्गालेको सपना नै झऱ्यो
छातीभरि जता छाम्यो पीरै पीर भेटेँ
तिनै व्यथा सङ्गालेर एउटा गीत लेखेँ

बाँच्दै थिएँ खुसीसँग एउटा बज्र पऱ्यो
जिन्दगीले साथ छोड्यो मृत्यु पनि टऱ्यो
मुटुभरि जता छोयो चोटै चोट भेटेँ
तिनै व्यथा सङ्गालेर एउटा गीत लेखेँ

## 21

विश्वास हो माया भावना हो माया
मुटु बोकी हिँडनेको गहना हो माया

मधुमासमा मनको ऋङ्कार हो माया
यौवनको सुन्दर शृङ्गार हो माया
मनको पवित्र चाहना हो माया
मुटु बोकी हिँडनेको गहना हो माया

संसारका सुखको खानी हो माया
जीवनको प्राण पानी हो माया
तर कहिलेकाँही तिर्सना हो माया
मुटु बोकी हिँडनेको गहना हो माया

## 22

तिमीले जलाएको मुटु अझै जलिरहेछ
कसरी पत्याऊँ यहाँ झरी छ भनेर
मन वरिपरि माया अझै छाइरहेछ
कसरी पत्याऊँ यहाँ दूरी छ भनेर

मेरा तिर्सनामा तिमीले पिएकी छ्यौ
भाका मुर्छनामा तिमीले दिएकी छ्यौ
चोट बनी मेरा गीतमा लेखिइन्छ्यौ
कसरी पत्याऊँ यहाँ दूरी छ भनेर

सम्झनाहरूमा तिमी नै बसेकी छ्यौ
वेदनाहरूमा तिमी नै पसेकी छ्यौ
आँसु बनी मेरा आँखामा आइदिन्छ्यौ
कसरी पत्याऊँ यहाँ दूरी छ भनेर

## 23

तिम्रा आँखा कतै कहीँ अरुसँगै झुके होलान्
न्याना तिम्रा अधरले अरुलाई नै चुमे होलान्
म त एक्लो त्यसै पनि एक्लै ओठ टोकिरहुँला
अनन्त हुन् तिम्रा खुसी त्यसैमा म हाँसिरहुँला

विछोडको आघातमा मुटु झनै चल्न खोज्छ
सम्भव भए बाहिर निस्की सलाइझैँ बल्न खोज्छ
पराई भयौ तिमी अब माया भने साँचिरहुँला
अनन्त हुन् तिम्रा खुसी त्यसैमा म हाँसिरहुँला

माया चोट भएपछि मन यस्तै रुँदोरहेछ
शरीर हिँडछ यताउता, मन त्यहीँ हुँदोरहेछ
सँधै तिम्रो सम्झनालाई छातीभरि टाँसिरहुँला
अनन्त हुन तिम्रा खुसी त्यसैमा म हाँसिरहुँला

## 24

त्यो अँङ्गालोमा बाँध्ने शायद तिमी थिइनौ
नत्र यति कठोर मायालु तिमी थिइनौ

नजीक आई मिठा मिठा कुरा गर्ने गर्थ्यौं
मनका सबै कुरा उदाङ्ग पार्ने गर्थ्यौं
आजकल मृदुभाषी पाउँदिनँ तिमीलाई
आजकल पारदर्शी देख्दिनँ तिमीलाई

रिसाउन सक्दिनँ आफ्नै छाती दुखाइदिन्छु
तिम्रो साटो आफैं नै आफूलाई फकाइदिन्छु
आजकल माया पनि देखाउन्नौ मलाई
आजकल किन तिमी बोलाउन्नौ मलाई

25

रातजस्तो केश त्यो जूनजस्तो मुहार
कति सुन्दर कति राम्रो मुस्कानको जुहार

वर्णन गरी सक्नु छैन सौन्दर्य छ हजार
तर केही कम भएजैँ चन्दनजस्तो निधार
लगाइदिऊँ कि टीका सिन्दुर बनिदिउँ कि शृङ्गार
रातजस्तो केश त्यो जून जस्तो मुहार

कताकता घुमाउँछ्यौ लोलाएका नजर
रहर साँची ओइलिजालान् फूलजस्ता अधर
चुमिदिऊँ कि एकपल्ट लगाई दिऊँ कि रहर
रातजस्तो केश त्यो जूनजस्तो मुहार

## 26

यसरी बस्यौ यो मुटु मारु निकाल्न सकिनँ
यो मुटुभित्र कसैलाई अरू स्वीकार्न सकिनँ

अँध्यारो कालो संसारबीच तिमी के आइदियौ
निभेको मेरो मनको आभा तिमी नै भैदियौ
बोलाए होलान् कतिले मलाई थाह नै पाईनँ
मधुर तिम्रो निमन्त्रण मैले पन्छाउन सकिनँ

वसन्त बनी बाह्रैमास मनमा छाइदियौ
भुलिनसक्नु प्रगाढ माया मुटुमा लाइदियौ
दिएथे होलान् कतिले माया थाह नै पाइनँ
बैँसालु तिम्रो रहरलाई मैले पन्छाउन सकिनँ

रुकाएका आँखा नशालु पारी यसरी हेरिदियौ
गुलाबी अधर ओठमा राखी रङ्ग नै फेरिदियौ
साँचेथे होलान कतिले तृष्णा थाह नै पाइनँ
नशालु तिम्रो यौवनलाई मैले पन्छाउन सकिनँ

## 27

हराएछन् सबै आश जिन्दगीका मेरा
अत्याउँछन् सबै त्रास जिन्दगीका मेरा

साथ दिने रक्सी नै छ आजकल मेरो
भट्टी नै छ घरजस्तो आजभोलि मेरो
भत्किएछन् सबै बास जिन्दगीका मेरा
हराएछन् सबै आश जिन्दगीका मेरा

जिउँदैरहेँ बहुलाजस्तो एक्लै कराउँदै
आफूसँगै पिउँदै रहेँ आफैं हराउँदै
पोखिएछन् सबै प्यास जिन्दगीका मेरा
हराएछन् सबै आश जिन्दगीका मेरा

## 28

पहिले केही थिएन जे भो जिन्दगी मै भो'
नहुनु हुन्छ त्यहाँ, जस्तो जिन्दगी नै भो'

रहर भो, कुण्ठा भो, केही विरक्त पनि भो'
जिजीविषा जीवनप्रति आसक्त पनि भो'
हेला भो', घृणा भो', प्रेम जिन्दगी मै भो'
नहुनु हुन्छ त्यहाँ, जस्तो जिन्दगी नै भो'

रोयो, विक्षिप्त भो, कहिले मन तृप्त भो'
उफ्रियो, दौडियो, तन; कहिले सुषुप्त भो'
खाँचो भो', अभाव भो', प्राप्ति जिन्दगी मै भो'
नहुनु हुन्छ त्यहाँ, जस्तो जिन्दगी नै भो'

मोह भो', अहंकार भो, ताण्डव नृत्य पनि भो'
मै हुँ भनेर के गर्नु आखिर मृत्यु पनि भो'
अन्त्य मै भए पनि हुन त जिन्दगी मै भो'
नहुनु हुन्छ त्यहाँ, जस्तो जिन्दगी नै भो'

# 29

हजार आँखा यी आँखामा जुध्छन् पलपल हराउँछन्
ती दुई नयन यी आँखामा जुध्दा हलचल गराउँछन्

हेरिरहूँ लाग्छ बदामी आँखा किन नजर झुक्दछन्
आश छ तर भनिदेऊ कहिले ती परेली फुक्दछन्
विरक्त मेरा यी आँखा पनि ती आँखामा रमाउँछन्
ती दुई नयन यी आँखामा जुध्दा हलचल गराउँछन्

हार हुन्छ भन्ने जानेर पनि यी आँखा जुध्दछन्
अजेय आँखा यी मेरा किन ती सामु चुक्दछन्
लजालु आँखा इशारा गरी खै के के अह्राउँछन्
ती दुई नयन यी आँखामा जुध्दा हलचल गराउँछन्

नशालु नजर मृगिणी नयन जुध्नलाई पोख्त छन्
नजुदाउ धेरै गाजलु आँखा विछोडमा दुख्दछन्
ती खुसी आँसु बन्लान कि भनी यी आँखा डराउँछन्
ती दुई नयन यी आँखामा जुध्दा हलचल गराउँछन्

## 30

विश्वास छैन मेरो भने चाहिन्न साथ तिम्रो
हिम्मत छ यति ममा एक्लै म जिउन सक्छु

फाँटको नदी म हैन भीर झर्दैमा चिच्याउने
सल्लो पनि म हैन भीड मात्रैमा सुसाउने
आफ्ना सुस्केरासँग आँसु म पिउन सक्छु
हिम्मत छ यति ममा एक्लै म जिउन सक्छु

पीर पर्दैमा गीत गाउने न्याउली चरी म होइन
चोट खाँदैमा चिच्याउने मृगिणी पनि म होइन
वेदना लुकाई सारा ओठ म सिउन सक्छु
हिम्मत छ यति ममा एक्लै म जिउन सक्छु

# 31

यो मेरो हठ हो हुनसक्छ दृढता हो
वेदना बाँधी नै राख्छु मनको गाँठो खोल्न सक्दिनँ
यो मेरो माया हो हुनसक्छ शिष्टता हो
तिम्रो भेद खुल्ला भनी आफ्नो पीर पोख्न सक्तिनँ

मनका तृष्णाहरूले आफैँलाई डसाइदिन्छु
आँसु प्यारो मलाई एक्लै खसाइदिन्छु
यो मेरो चाहना हो हुनसक्छ बहाना हो
तिम्रो खुसी फुट्ला भनि भीडमा आँसु झार्न
सक्दिनँ

मेरो छेउ पनि बहार नआएको हैन
मायाले भिजेको जीवन पनि नबाँचेको हैन
यो मेरो रहर हो हुनसक्छ विवशता हो
तिम्रो कथा बोल्ला भनी आफ्नो अतीत लेख्न सक्तिनँ

## 32

जिन्दगीका चोटहरूले चहऱ्याउँदा छाती
रक्सिएर रम्न खोज्छु जब हुन्छ राति

साथीहरू नरिसाउनु मात्यो एक्लै भनी
हर प्यालामा मिसिएको छ घात आँसु बनी
म त कहिल्यै एक्लो हुन्न पीर हुन्छ साथी
रक्सिएर रम्न खोज्छु जब हुन्छ राति

भीडबाट टाढिएर संसार हेर्दै मातिन्छु
हर चीजलाई बेग्लै देखी एक्लै आत्तिन्छु
लाग्छ त्यस्तो बाँच्नु भन्दा यस्तै बाँच्नु जाति
रक्सिएर रम्न खोज्छु जब हुन्छ राति

## ३३

अलिकति म बाँचुला अलिकति तिमी बाँचिदेऊ
आऊ हामी जिन्दगीलाई एकअर्काकोमा गाँसिदिऊँ

तिमी पढ मेरा इच्छा, म तिम्रा भाका बुझिदिन्छु
मेरा धड्कन सुन तिमी, म तिम्रा आँखा पुछिदिन्छु
तिम्रा मेरा भावनालाई एकै ठाउँमा टाँसिदिऊँ
हिजो अस्ति जे भो' भो' अब त हामी हाँसिदिऊँ

तिमी बस मनमा मेरो, म तिम्रो मनमा आइदिन्छु
म भएर सोच तिमी, अनि म तिमी भइदिन्छु
बुझेर एक अर्कालाई जीवनभर हाँसिदिऊँ
आफसका सुख दुःख एकै ठाउँमा बाँधिदिऊँ

## 34

सुख दुःख जीवनभरको साथ जिन्दगीको
रक्सी जस्तै लाग्न थाल्यो मात जिन्दगीको

आफू रुन्छु मनभित्र जीवन हाँस्छ तनमा
छाती पोल्छ, दुख्छ मुटु, काँडा बिझ्छ मनमा
पोल्नु, दुख्नु बिझ्नु नै हो जात जिन्दगीको
रक्सी जस्तै लाग्न थाल्यो मात जिन्दगीको

कस्तो नशा लागेको यो कचिङ्गलको खेलमा
खेल्दा खेल्दै परिसकेँ यसैको मोह जालमा
मृत्युको दिनभन्दा, प्यारो रात जिन्दगीको
रक्सी जस्तै लाग्न थाल्यो मात जिन्दगीको

35

दिनदिनको उतारचढाव विपना गाह्रो लाग्छ
ब्यूँझूँ भने तिमी हुन्नौ सपना प्यारो लाग्छ

हेरिदिन्छ्यौ, मुस्काउँछ्यौ, लजाउँछ्यौ पनि
खुलिदिन्छ्यौ आफ्ना मनका सबै कुरा भनी
त्यसैले त तिम्रो मेरो बन्धन दह्रो लाग्छ
ब्यूँझूँ भने तिमी हुन्नौ सपना प्यारो लाग्छ

नजीक आई सोधिदिन्छ्यौ के छ खबर भनी
छोइदिन्छ्यौ औंलाहरूले चुमिदिन्छ्यौ पनि
कति कोमल स्पर्श यो फूल साह्रो लाग्छ
ब्यूँझूँ भने तिमी हुन्नौ सपना प्यारो लाग्छ

## 36

मलाई अभिशाप लाग्दछ, तिमी जिन्दगी हो भन्दछ्यौ
यो पश्चातापको सागर हो, तिमी जिन्दगी जो भन्दछ्यौ

शान्त भएर सँधै यहाँ कोलाहल ज्यूनु छ
खुसी मानेर चोटलाई यहाँ आँसु प्यूनु छ
यो आगोलाई माया नभन
मलाई यो ताप लाग्दछ
तिमी जिन्दगी हो भन्दछ्यौ
मलाई अभिशाप लाग्दछ

झिकेर मुटु छातीबाट फेरि छातीमै खोज्नु छ
अघाएर जीवनबाट फेरि जीवन नै रोज्नु छ
यो बाध्यता मोह हो नभन
मलाई यो श्राप लाग्दछ
तिमी जिन्दगी हो भन्दछ्यौ
मलाई अभिशाप लाग्दछ

## 37

हजार टुक्रा भएर पनि नधड्की भा' छैन
हरेक पल टुक्रिन्छ मुटु जोडिएको था' छैन

आँखाले खोज्छ मायाको मुहार त्यै टाढा भइदियो
ओठलाई चाह माया कै अधर अप्राप्य भइगयो
प्रियतमसँगै गएको बहार अझै आ' छैन
हरेक पल टुक्रिन्छ मुटु जोडिएको था' छैन

अँध्यारो चिसो रातले सँधै प्रियालाई सम्झाउँछ
मुटुको दियो बलेर पनि अन्धकार बोलाउँछ
प्रेयसीसँगै गएको आभा अझै आ' छैन
हरेक पल टुक्रिन्छ मुटु जोडिएको था' छैन

म हाँस्न खोज्छु तर यो मन दुःखले रुझाउँछ
सम्झनाको खुसीले पनि आँखैलाई भिजाउँछ
मायालुसँगै गएको हाँसो अझै आ' छैन
हरेक पल टुक्रिन्छ मुटु जोडिएको था' छैन

## 38

मनभरि मायैमाया तर भाका खोल्न सक्दैनन्
चोट देखेर मौन छन्, यी आँखा बोल्न सक्दैनन्

तिम्रा वेदनाहरूमा आँसु पोख्ने गर्छन्
तिम्रै पीर पढी गह भिज्ने गर्छन्
दुखेका तिम्रा विवशता अरुले बुझ्न सक्दैनन्
चोट देखेर मौन छन्, यी आँखा बोल्न सक्दैनन्

आँसुहरूले शायद व्यथा धुने गर्छ्यौं
मनमा बोझ बढी एक्लै रुने गर्छ्यौं
लुकेका तिम्रा निरसता मुस्कानले छेक्न सक्दैनन्
चोट देखेर मौन छन्, यी आँखा बोल्न सक्दैनन्

39

थुनेर चाहना निरस भएँ
यो दुनियाँ सामु विवश भएँ
मेरो मौनताका धेरै अर्थ छन्
यो जिन्दगीमा शायद ती भन्न सक्दिनँ

एक्लै एक्लै एक्लै बाँच्न मनपराएँ
रक्सीभित्र पसी एक्लै नै हराएँ
म मातिनुका धेरै कारण छन्
यो जिन्दगीमा शायद ती बताउन सक्दिनँ

तिनैसँग रोएँ तिनैसँग हाँसेँ
तिनै आँसु समेटी मुटुको घाउ टाँसेँ
यी आँसुका आफ्नै व्यथा छन्
यो जिन्दगीमा शायद फुकाउन सक्दिनँ

## 40

भाग्यले उसलाई लुटेर लग्यो केही भन्न सकिनँ
पराई भई हराइगई कहीँ देख्न सकिनँ

जानेर उसलाई गुमाएको हैन भाग्यले लुटेको
अँगाल्न मैले नचाहेको हैन भाग्यै हो फुटेको
मनमा माया सङ्गाली राखेँ आऊ भन्न सकिनँ
भाग्यले उसलाई लुटेर लग्यो केही भन्न सकिनँ

छातीमा मुटु धड्केको हैन चोट हो लुका'को
आँखामा आँसु छल्केका हैनन् पीडा हो फुका'को
चाहेको थिएँ जुन कुरा भन्न त्यही भन्न सकिनँ
भाग्यले उसलाई लुटेर लग्यो केही भन्न सकिनँ

## 41

ईशारैले लेखिदेऊ कागज चाहिँदैन
मनका कुरा व्यक्त गर्न आवाज चाहिँदैन

हिजो पराई आज नजीक भोली को हो को हो
आफ्नै मनको भर हुन्न अरूको के हो के हो
मुटुको ढोका नउघारी माया लाईंदैन
मनका कुरा व्यक्त गर्न आवाज चाहिँदैन

मुस्काइदेऊ कहिलेकाहीँ आँखा जुध्दा खेरी
कहिलेकाहीँ लजाईदेऊ भेट हुँदा खेरी
त्यसै चुप बसेर मात्र मन तानिदैन
मनका कुरा व्यक्त गर्न आवाज चाहिँदैन

## 42

तिम्रो अधरलाई आज रक्सी भन्न मन लाग्या'छ
चुमिदेऊ मलाई एकपल्ट रक्सी बन्न मन लाग्या'छ

काला लामा केश ती दिउँसै रात बोक्दछन्
ती नशालु आँखा जहाँ हेर्छन् मात पोख्दछन्
बैँसालु ती ओठमा यी ओठ राख्न मन लाग्या'छ
चुमिदेऊ मलाई एकपल्ट रक्सी बन्न मन लाग्या'छ

लुकेको यो मनको सबै बात भनुँ कि जस्तो
रोम रोम तिमीलाई नै मात भनुँ कि जस्तो
तिम्रा अङ्ग-अङ्गको मात पिउन मन लाग्या छ
चुमिदेऊ मलाई एकपल्ट रक्सी बन्न मन लाग्या'छ

43

मैले सबैथोक भनेथेँ, तिमीले माया ठानिदियौ
ती पूर्णताका आभाषलाई तिमीले छाया ठानिदियौ

आँसु पोखाई अञ्जुली खुसीहरूले भरेथेँ
रुनु थियो वा हाँस्नु त्यो दोधारमा परेथेँ
त्यो अनादि सम्झेको तिमीले नयाँ ठानिदियौ
मैले सबैथोक भनेँथेँ, तिमीले माया ठानिदियौ

नजीक टाढा थिएन जहाँसुकै नै त्यो थियो
मुटुभित्र एकनाशले बाँचेको त्यो जे थियो
यहाँ देखिनु नै के थियो तिमीले काया ठानिदियौ
मैले सबैथोक भनेथेँ, तिमीले माया ठानिदियौ

यहाँ र वहाँ के हो र यो सृष्टि सबै एकै ठाउँ
हरेक पलका अनुभवको देखिन मैले कुनै नाउँ
यो दुर्बोध नै होस् भन्दछु, भय अभय ठानिदियौ
मैले सबैथोक भनेथेँ तिमीले माया ठानिदियौ

44

धोका खाएर आँखाको सपनासँगै भत्किएँ
खेलौना भएर मायाको भावनासँगै भत्किएँ

अनुरागको फूल चुमी एक्लोपनको काँढा मासेँ
बादल छायो विछोडको चोटको वर्षामा भिजेँ
पैह्रो भएर खुशीको यौवन सँगै भत्किएँ

विश्वासको जग हाली आकाङ्क्षाको महल बनाएँ
हुरी चल्यो सन्देहको घातहरूका भूकम्प आए
खण्डहर भएर रहरको जीवनसँगै भत्किएँ

# 45

छोरो तँ सबै जस्तो हुनू म जस्तो नहुनू
संसारलाई फाँडेर हिँड्नू बसेर नरुनू

कोमल मनले यो संसारमा आँसु नै पाउँदछ
फूलको मुस्कान छल गरी यहाँ हुरी नै ल्याउँदछ
तँ काँडा हुनू तँ भाला हुनू नौनी तँ नहुनू
कहीँ फूल देखे कुल्चेर हिँडनू मायाले नछुनू

ढिटलाई आदर षठलाई श्रद्धा यहाँको रीत हो
होइन्छ पूज्य जे हुँदा खेरी त्यही हुनु जीत हो
तँ साँढे हुनू तँ गधा हुनू मान्छे तँ नहुनू
अटेरी हुनू तँ मूर्ख हुनू बुद्धिलाई नछुनू

कहाँ पुग्यौ भन ए माया तिमी म त्यहीँ आउँदैछु
खेलेको हामीले त्यही ठाउँमा बसी गीत यो गाउँदैछु

सम्झना आउँछ त्यो पाल्ते खोला सलल बगेको
ढुङ्गामा बसी तिमी र मैले कसम खाएको
नभेटी कहीँ तिमीलाई अन्त म त्यहीँ धाउँदैछु
खेलेको हामीले त्यही ठाउँमा बसी यो गाउँदैछु

त्यो बाटो हिँडदा रुखको आडमा लुकेझैँ गरेको
जिस्केर तिमीले चिमोट्दा खेरी दुखेझैँ गरेको
त्यही खेल खेली हाँसेर बस्न यो घर छाउँदैछु
खेलेको हामीले त्यही ठाउँमा बसी गीत यो गाउँदैछु

बानी परेका ती आँखा तिम्रा अझै पनि झुक्न खोज्छन्
कामना तिम्रा खुल्न चाहेर अझै किन लुक्न खोज्छन्

झुम्का हल्लेको मात खाए जस्तो
चुरा मिलेर गीत गाए जस्तो
बुझ्दैछु सबै आग्रहलाई, आज ती पनि दुख्न खोज्छन्
बानी परेका ती आँखा तर अझै पनि झुक्न खोज्छन्

कामेका तिम्रा ती अधरहरू
सङ्कोची मनका ती रहरहरू
बुझ्दैछु म लाजहरूलाई, आज ती सबै फुक्न खोज्छन्
बानी परेका ती आँखा तर अझै पनि झुक्न खोज्छन्

## 48

धर्ती आकाश भन्दा पर जाऔँ कतै हिँड
म पछि पछि आउनेछु तिमी अघि हिँड

तिम्रो लागि गर्नु पर्ने सबै नै म गर्ने नै छु
विरोधका सागरहरू तिमीसँगै तर्ने नै छु
दुनियाँ यो बैगुनीले बाधा गर्न सक्छ
म बाँधी यसलाई आउनेछु तिमी अघि हिँड

ताराबुट्टे आकाशको घुम्टो लगाइदिउँला
जून टिपी निधारमा टीका लगाइदिउँला
आकाशगङ्गा गलाभरि पोते सुहाउने छ
म लिई यसलाई आउनेछु तिमी अघि हिँड

49

जे थियो मेरो सबै प्रीत पानी भो'
सबै नाता बिराना मेरो रगत पानी भो'

बगेको आँखाबाट आँसु थियो वा व्यथा त्यो
बाँचेको पल मैले जीवन थियो वा कथा त्यो
मलाई बिर्स्यो अतीतले मेरो विगत पानी भो'
सबै नाता बिराना मेरो रगत पानी भो'

तृष्णा हो मेरो यो, या कुण्ठित माया हो
विरह हो यो मुटु, या साँच्चै माया हो
रहरहरू मरिगए मेरो आगत पानी भो'
सबै नाता बिराना मेरो रगत पानी भो'

## 50

बाधा सबै सिध्याई निर्बाध बाँचिरहेछु
चितामाथि हेर आज म हाँसिरहेछु

अरूलाई चोटदिई बाँच्ने त्यो जीवन हैन
संसारलाई छोडी एकदिन नजाने कोही छैन
दुनियालाई पछाडि छोडी अगाडि लागिरहेछु
चिता माथि हेर आज म हाँसिरहेछु

तँछाड मछाड गर्ने मान्छे नदेखेको हैन
ज्यूँदो मान्छेले तर, अब मलाई भेट्ने छैन
केवल दुई हातमाथि आराम गरिरहेछु
चितामाथि हेर आज म हाँसिरहेछु

तिम्रा कामनालाई बैँसको मात दिन सक्छु
जीवन भर नभुल्ने एक रात दिन सक्छु

यौवनको उज्यालोमा रात लुकाइदिन सक्छु
कहीँ अन्जान मै कतै दुखाइदिन सक्छु
मेरो विश्वास नगर्नू तिमी चनाखो हुनू
समीपताका बाधाहरू फुकाई दिन सक्छु

आफ्नो बनाउँछ्यौ भने, तिम्रै भइदिन सक्छु
मायाले तिमीलाई अङ्गअङ्ग धोइदिन सक्छु
मेरो भर नपर्नू तिमीले होस गर्नू
नछुनु पर्ने पनि कतै छोइदिनसक्छु

तिम्रो शरीरभरि नजर छरिदिन सक्छु
तिमी टाढा सरे, म नजीक सरिदिन सक्छु
मेरा आँखा छेक्नू तिमीले मलाई रोक्नू
नगर्नु पर्ने पनि केही गरिदिन सक्छु

52

सँगै बिताउने यो रातलाई उज्यालो पारौँ न आज
सँधै आँसुले भरिन्छ आँखा अनुरागले भरौँ न आज

म गीत दिन्छु तिमी धून भर
म प्रीत दिन्छु तिमी माया गर
सम्झना मिठो बनाइदिने यस्तो केही गरौँ न आज

म ओठ दिन्छु तिमी निधार देऊ
म छाती दिन्छु तिमी शिर देऊ
सबै अङ्ग–अङ्गलाई एकअर्काकोमा सारौँ न आज

एउटा गीत लेखेर मैले कैयौँ कथा अन्त्य गरेँ
मनभित्र चल्मलाएका सयौँ व्यथा शान्त गरेँ

रहरहरू उम्लिरहने न्याना ताता यौवनभरि
आगोजस्तै पोलिरहने व्यर्थै व्यथा सिरानभरि
आधा रातमा ब्यूँझिएर सबै सपना बन्द गरेँ
एउटा गीत लेखेर मैले कैयौँ कथा अन्त्य गरेँ

जतातते पीरहरूको टाटै टाटा यो मनभरि
खोलाजस्तै बगिरहने कथैकथा जीवनभरि
मौन रहेका भावना खै, कता कता व्यक्त गरेँ
एउटा गीत लेखेर मैले कैयौँ कथा अन्त्य गरेँ

बेहोसीमा कति कति आफैँलाई पिइदिएँ
दुःख सुनायो रातले सबै मैले लिइदिएँ

के भन्नु कसलाई भन्नु, कहाँ वेदना फुकाउनु ?
निर्मम यी पलहरूलाई किन सुस्केरा सुनाउनु ?
पाइला पाइला भेटिनेलाई हाँसो नै दिइदिएँ
बेहोसीमा कति कति आफैँलाई पिइदिएँ

बुझ्नि भन्दछन् सबै, चोट बुझ्निे कहाँ हुन्छ
एउटाले बाँचेको कथा अर्कोलाई नयाँ हुन्छ
जे जे भेट्टाएँ यात्रामा तिनैको माला उनिदिएँ
बेहोसीमा कति कति आफैँलाई पिइदिएँ

55

रोज्नुपर्दा बादल हैन रोज्छु तिम्रै केश
घामले ज्यादै पोल्यो भने खोज्छु तिम्रै केश

फिँजिँइरहन्छन् यताउता आकार फेरिफेरि
विवाद गर्छन् मान्छेहरू पारि डाँडा हेरी
कोही भन्छन् कुहिरो हो, कोही कालो बादल
कसैले सोधे मलाई, भन्छु तिम्रै केश

रात झनै बढ्दै थियो, नदेखिने टाढा
हिँड्नु पर्ने धेरै थियो, पुग्न माथि डाँडा
अरू सबै हिँड्दै थिए निदाएँछु म चैँ
रातलाई पनि आजकल देख्छु तिम्रै केश

## 56

होस खोस्ने मुस्कान तिम्रो अधरका मादक प्याला
नपिई सक्दिनँ थाम्न बरू यो ज्यानै जाला

गुलाफका कोपिला हुन् कि यो पिरतीको रङ्ग हो
संसार नै समेटेको यो कस्तो अनौठो अङ्ग हो
ओठ तिम्रो बेइमानी त्यस्तो हो, या उस्तो यो बेला
नपिई सक्दिनँ थाम्न बरू यो ज्यानै जाला

अनुरागले बनायौ दैव, या बनायौ मातले
आरिस लाग्छ यी ओठ कतै छोयौ कि तिमीले हातले
यी अधर त मेरा पो हुन्, यी हुन मेरा मधुशाला
नपिई सक्दिनँ थाम्न बरू यो ज्यानै जाला

57

तस्वीरमा तिमीलाई छाम्न मन लाग्यो
तिमीलाई आफूभित्रै खाम्न मनलाग्यो

हेरिरहूँ जस्तो लाग्ने कति राम्रो चित्र
नलजाई हेरिदिन्छ्यौ मेरा आँखाभित्र
नशालु हेराइ पिई मात्न मनलाग्यो
पिरतीको ज्वरो बोलाई तात्न मनलाग्यो

मैले तिमी आउञ्जेल नि पर्ख्नै सकिनँ
मुस्काएको तस्वीर हेरी खप्नै सकिनँ
तिमीलाई अँगालेर रम्न मनलाग्यो
तस्वीरबाटै झुकेर चुम्न मनलाग्यो

## 58

सम्हालिन त खोज्दछु, चारै पहर चर्कन्छु
के भो यस्तो मलाई, भई खण्डहर भत्कन्छु

उज्यालो ल्याउन सक्दैन आँसुको तातो छुवाइले
यो मन रुनै बिथोल्छ भित्ताहरूको रुवाइले
चिसा–चिसा रातसँगै प्रीतको रहर ब्यूँझन्छु
ओस लागेका बिहानझैँ मायाको पहार पर्खन्छु

चहर्‍याउँछ नशाभित्र, आफ्नै रगतको बगाइले
मलाई नै पोल्दछ मेरो निश्वासको बहाइले
आगोजस्तो जीवनको भएर मझधार बग्दछु
जीवनका प्रत्येक पल मृत्युको सङ्घार टेक्दछु

59

हरघडी उमेर मात्र अग्लिरहेछ
जिन्दगी त मैनजस्तो पग्लिरहेछ

हाँस्न खोज्दै सँधैभरि जल्नु मात्र छ
बाँच्या भन्दै दिनदिनै बल्नु मात्र छ
शिखाऊँ यताउता हल्लिरहेछ
जिन्दगी त मैनजस्तो पग्लिरहेछ

त्यसै छोडूँ भने पनि जमी अड्दछ
बाली रहूँ भन्दा पनि भत्की बग्दछ
मृत्यु बरू प्रत्येक पल सग्लिरहेछ
जिन्दगी त मैनजस्तो पग्लिरहेछ

# 60

निष्ठुरीको विश्वासघातमा जिउन पनि गाह्रो गाह्रो
उसैसँगकै वाचा सम्झी पिउन पनि गाह्रो गाह्रो

उसकै याद आउने मनका व्यथाहरू गनूँ भन्दा
बदनाम उसकै हुने डर आफ्नो कथा भन्दा
तर सँधै यी ओठ मेरा सिउन पनि गाह्रो गाह्रो
उसैसँगकै वाचा सम्झी पिउन पनि गाह्रो गाह्रो

नजुध्ने हैनन् आँखाहरू अरू आँखाहरूसँग
मायालु बास खोज्दै नजीक नजीक आ'कासँग
उसकै घात सम्झी माया लाउन पनि गाह्रो गाह्रो
उसैसँगकै वाचा सम्झी पिउन पनि गाह्रो गाह्रो

आँखा चिम्ले सामु आउँछन् बैगुनीकै चित्रहरू
आँखा खोल्दा कोठाभरि उसकै झुटा पत्रहरू
सपनामा उही आउँछे निदाउन पनि गाह्रो गाह्रो
उसैसँग कै बाचा सम्झी पिउन पनि गाह्रो गाह्रो

61

मातिएर केके भनें, रक्सिएर केके बोलें
नसोच्नू तिमीले यो, मैले सबै सत्य बोलें

कहिले जीवन व्यर्थ ठानी, मर्नुपर्छ पनि भनें
कहिले मृत्यु डर मानी बाँच्नुपर्छ पनि भनें
तर जीवन मृत्यु दुबै मानिसका विवशता हुन्
कहिले दुबै इच्छाजस्ता, कहिले दुबै सम्झौता हुन्

कताकता तिमीलाई मैले नजीक पाएजस्तो
कहिले काहीं म आफैंबाट पनि टाढा भएजस्तो
के हो के हो जिन्दगी यो नबुझिने कथा त हो
जति रोए जति भने पनि उही ब्यथा त हो



## सुमन पोखरेल

जन्म

आश्विन ५, २०२४ (२१ सेप्टेम्बर, १९६७) कचिडे, धनकुटा

शिक्षा

बी. एस्सी, बी. एल, एम. बीए

प्रकाशित कृति

शून्य मुटुको धड्कनभित्र (कविता) २०५६

हजार आँखा : यी आँखामा (गीत) २०५९

सम्पर्क


१११-बुद्धविहार मार्ग, अलका बस्ती

विराटनगर - १५

फोन नं. ०२१-२४९२७, ०२१-२८१०६

e-mail: suman_pokhrel@hotmail.com




ISBN : 99933-656-3-7

# हजार आँखा : यी आँखामा

HAZAAR AANKHAA : YEE AANKHAAMAA